आंग दिकी शेर्पालाई पहिलो पल्ट मैले भ्यानकुभरको ब्रोडवे स्ट्रीटमा माउन्टेन इकुइप्मेन्ट को पसल भित्र भेट्दा म झुक्किएकी थिएँ | झट्ट हेर्दा चाइनीज फिल्म जगतकी अभिनेत्री जस्तै लागेर म उनिसंग परिचित हुन हतारिएकी थिएँ | तर उनि त खुम्जुंग कि शेर्पिनी पो रहिछिन | उनि आफ्नो क्यानाडा भ्रमण सिध्याएर खुम्बु फर्किने बेला भै सकेको रहेछ त्यसैले किनमेलको लागि डाउन टाउन जादै रहिछिन | दिकीको ओजस्वी व्यक्तित्व र सुन्दरताले मलाई यती धेरै प्रभावित पारेछ कि म उनको अनुरोधमा आफ्नो काम धन्दा बिर्सेर उ संगै घुम घाममा मस्त भएछु | जे होस् करिब एक दुइ हप्ता हामीले धेरै जसो समय संगै बितायौ | एक अर्काको विचार, बानी बेहोरा मिलेको देखेर हामी दुवै खुसि भयौ र एकदमै छिटो घनिष्ठ साथी पनि | अहिले उनि मेरो एउटा कथाको पात्र जस्तै भएकी छिन् र म यति बेला मेरो कथाको पात्र लाई पछ्याउदै खुम्बु आइपुगेकी छु | नेपाल फर्किने बित्तिकै खुम्बु आएर उनको दुइ तारे स्तरको होटेलमा कम्तिमा दुइ हप्ता बस्नु पर्ने सर्त राखेकी थिईन उनले | र म काठमाडौँ फर्किने बित्तिकै खुम्बु जान आत्ति सकेकी थिएँ |

यति बेला म आंग दिकीको स्यांगबोचे नजिकैको एउटा निकै स्तरीय होटेल को बरन्डामा बसी रहेकी छुँ | मेरो सामुन्ने आधि कुइरो ओढेर बसेको थामसेर्कु छ | उ मेरो रुपमा लट्ठिएको हो या म उसको, जे होस् हामी एक अर्कालाई निरन्तर हेरी रहेका छौ र बाक्लो कुइरो भित्र बाट आफ्नो सिर निकालेर क्वांग्दे घरि घरि हाम्रो चर्तिकलाको चियो गरि रहेको छ | दिकी भने आज भ्यालेन्टाइन ब्लास्टको तैयारीमा लागेकी छिन् | मौसमको खराबीले कुनै पनि बिमान नआएकोले काठमाडौँ फर्किन नपाएका थुप्रै देसी अनि बिदेसी पर्यटकहरु होटेलमा बसी राखेका छन् | म आफ्नो ल्यापटप् खोलेर बसे पनि केहि लेख्न सकी रहेकी छुइन | कारण स्पस्ट छ, यो वर्ष पनि भ्यालेन्टाइन डे को दिन म एक्ली छु | २००८ मा क्यानाडाको बांफमा, २००९ मा भ्यानकुभरमा अनि अब २०१० मा खुम्बुमा | अनायास मलाई त्यो टुंगना र डम्फु भन्ने गीत याद आयो र मैले यु ट्युबमा गएर आफ्नो प्ले लिस्टमा भएको त्यो गीत बजाएं | गीतसंगै त्यो मानिसको रुप मेरो आँखामा सजिब भएर सलबलायो जो आफ्नो गाडीमा यही गीत घन्काउदै म बसी रहेकी रेस्टुरेन्ट भित्र पसेको थियो | त्यो अन्जान मानिससित को संक्षिप्त तर रोचक जम्का भेट पछि उ मेरो कल्पना मा हरेक भ्यालेन्टाइन डे मा आउने गरेंको सत्यले मलाई फेरी सताउन थाल्यो | गएको वर्ष उ अचानक मेरो फेसबुकमा साथी बन्न आइ पुगेको थियो तर पछि उसको प्रोफाइल त्यतिकै निष्क्रिय भएर गयो |

मैले सोचेकी थिएँ, नेपाल फर्किए पछी म उसलाई सजिलै भेट्टाउने छु | उ प्रतिको मेरो आसक्तिको भावनाले उसलाई मेरो नजिक ल्याउने छ, अनि म उसलाई चिन्ने कोसिस गर्ने छु | नचिनीकन, उसको बारेमा केहि पनि थाहा नपाई, खाली उसको रुपबाट मोहित भएकै भरमा मैले बिगतको दुइ बर्ष, मायाको यो अनौठो बिउलाई मुटुको एउटा कुनामा जोगाई राखे | तर लाग्छ एस पल्ट पनि यसरी बहकिएर नै मेरो Valentine Day बित्ने छ | आफ्नो यो नियति प्रति मलाई सारै रिस उठी रहेको छ तर म के नै गर्न सक्छु र ?
किन किन थामसेर्कु अलि बढ्तै मलाई नियाली रहेछ जस्तो लाग्यो | सायद उ मेरो रुपमा लट्ठिएको छ ? म पनि उसको रुपमा लट्ठिएको छु |
"थामसेर्कु, आजको साँझ तिमि व्हिस्की पिउदै पप्लु खेल्न नाम्चे नजाऊ है ? बरु तिम्रो लेकमा फुल्ने कुनै पनि रातो रंगको फुल लिएर यतै आउ | आजको साँझ भ्यालेन्टाइन डे हो र म तिम्रो हातबाट रातो फुलको गुच्छा उपहार स्वरूप लिन चाहन्छु |" म त्यतिकै बर्बराएं | उसले मेरो मनको कुरा बुझे जस्तै अलिकति मुस्कुरायो | अलिकति घाम कहाँबाट छिरेर उसको मुहारमा परेको थियो, उ साच्चै यत्ति मोहक देखियो कि म हेरेको हेर्यै भएं |

तर यतिनै बेला आंग दिकी सरासरी म भएको ठाउमा आईन र सोधिन "के हो मेलिना, तिमि त एकदमै उदाश भएर बसी रहेकी छौ ? कतै आफ्नो प्रेमीको सम्झनामा तड्पी रहेकी त होइनौ ?"

"तिमीले ठिक अनुमान गर्यौ दिकी, आज भ्यालेंटैईन् डे को दिन, यसरी एक्लै बस्नु परेपछि उदाश नभएर के हुनु त ?" मैले दिकीको प्रश्नलाई सहज लिएं र कुरा सुरु गरें |

"क्यानाडामै छोडेर आयौ आफ्नो मायालाई ? फोन गर न त, हामीसंग स्याटलाईट फोन छ नि |" आंग दिकीले पनि साच्चै गम्भीरतासंग लिईन |

"खै कहाँ छ कहाँ छ ? उ मेरो सम्पर्कमानै छैन |" मेरो आवाजलाई के भयो कुन्नि म त साच्चै उदास अनि रुन तैयार भए जस्तै भएं | दिकी आफ्ना सुन्दर आँखाहरुले मलाई पढी रहेकी थिईन | म अभिनेत्री त होइन तर लाग्छ उनलाई मेरो कुरा अनि भाव भंगीमाहरु अभिनय जस्तै लागेको हुनु पर्छ |

" प्र्याँक्ली भनु दिकी ? ...एउटा मान्छेको रुप मेरो मन मस्तिस्कमा चुम्बकसंग फलाम टासिए जस्तै टासिएर बसेको छ, उ मेरो प्रेमी हो कि होइन त्यो पनि मलाई थाहा छैन तर हरेक बर्ष भ्यालेंटैईन् डे को दिन आए पछि, त्यो मानिसको चाहना एक्कासी मेरो मनमा आउँछ | अनि म कल्पनामै भए पनि उ सित लठारियर अनेक चर्तिकला गरेको कुराहरु लेख्ने गर्छु, तर .....?

"तर के ..?" मायालाग्दो पाराले सोधिन उनले |

"तर आज म थामसेर्कुसंग आँखा जुधाएर बसी रहेकी छु, लेख्नलाई कुनै शब्दहरु नै जुराउन सकी रहेकी छुइन |" मेरो जवाफसंगै उनि मेरो करिब आईन र भनिन " थामसेर्कु त केटि हो, तिमि जस्तै बिन्दास केटि | "

"..............." मैले निशब्द उनलाई आफ्ना उत्सुक आँखाहरुले एकोहोरो नियाली मात्र रहे | उनले हुन सक्छ मेरो मुड ठिक पार्ने सोचले यो रमाइलो प्रसङ्ग उठाईन र आफ्नो कुराको शिलशिला जोडिन "हाम्रो यता एउटा लोकोक्ति छ, उ त्यहाँ आमादब्लम लाई हेर त, उसको शिर अलिकति बांगो छ, खास कुरा के हो भने संग्खुवासभाको हिमाल मकालु थामसेर्कुलाई नहेरी बस्नई सक्दैन रे अनि आमादब्लामको शिरले जहिले पनि छेकिदिने भएकोले मकालुको विशेष अनुरोधमा उसले आफ्नो शिर अलिकति बंग्याई दिएको रे | "

मैले हासो रोक्नै सकिन, दिकीले पनि थोरै मुस्कुराउँदै तर उस्तै गम्भीर मुद्रामा भनिन " नपत्याएको तिमीले ?"

"हैन हैन, मलाई त रमाइलो लागि रहेको छ अरु सुनाउन..| : मैले दिकीसंग बिन्ति गरें|

" यता खुम्बिलालाई हेर ..| " उनले खुम्जुंगको पछाडी उभिएको कालो पहाडतिर औंल्याउंदै बोल्न सुरु गरिन |

" तिम्रो लागि यो मात्र चट्टानहरुको थुप्रो होला तर हामी किम्बदन्ति अनुसार, खुम्बिलालाई पार्वतीको माइती घर हो भनेर विश्वास गर्छौ, त्यसैले खुम्बिलाकोमाथिबाट बिमान उडाउन निषेध छ, आरोहण निषेध छ, किन भने त्यो पार्बतिको माइती घर हो | अनि तिमीले स्वस्थानी को कथा त सुनेकै होला ?"

" सानोमा सुनेकी थिएँ | " मैले संछिप्त जवाफ दिएँ

" पार्वतीले महादेवलाई पतिको रुपमा पाउँ भनेर सानै देखि तपस्या गर्नु भएको क्षेत्रमा छौ तिमि यति बेला | येदि तिम्रो प्रेम साँचो हो भने खुम्बिलासंग प्राथना गर | उ जहाँ भए पनि सके आजै नभए पनि छिट्टै नै कहिँ न कहिँ तिमि हरुको मिलन पक्का हुनेछ | "

म साच्चै बिन्दास हासो हासेर रमाय र भनैँ "तिम्रो कुरामा एक रत्ति पनि अविस्वास नगरी म प्राथना गर्छु है त ?" अनि म आफ्ना आँखा हरु बन्द गरेर बिपस्यनामा बसे जस्तै ध्यान मुद्रामा लीन भए | तर यतिनै बेला अनायास आकासमा तराईतिर सुनिने मिलको आवाज जस्तै अविरल टुक टुक आवाज सुनिन थाल्यो र त्यसले मेरो चिर ध्यान मुद्राको सिलसिला तोडी दियो | मैले आफ्नो आँखा खोले र दिकीले जस्तै कुइरोले ढाकेको आकासमा यता उता नियाल्न थाले |

" कुनै हेलिकप्टर बिपत्तिमा परे जस्तो छ ? " यति भनेर उनले ज्याकेटको गोजीबाट जपमाला निकालिन र कुनै अज्ञात मन्त्रहरु जप्न थालिन | मैले पनि हतार हतार फेरी आँखा चिम्लिएर खुम्बिलासंग प्राथना गरें "हे भगवान, जो भए पनि उनीहरुको ज्यान जोगाई दिनुस, सकुसल अवतरण गर्न सकुन | "

मैले आँखा खोलेर फेरी आकास तिर आँखा डुलाउन थाले | दिकी अविरल जपी रहेकी थिईन आकाश हेर्दै | आश्चर्यको कुनै सिमाना थिएन, बादलहरु अनायाश जोडले मडारिन थाली रहेका थिए र हेर्दा हेर्दै थुप्रै बेइमान घोडाहरु चुपचाप तबेलामा पसे जस्तै स्यांगबोचे माथिको बादलहरु दुधकोशीको खोंचमा टमक्क कसिएर बस्न सुरु गरें | अलिकति घामको उज्यालो परेर थामसेर्कुको मोहिनी रुप रक्तिम भएको देखियो | अनि त्यही बेला आकासमा कुइरोभित्र हराएको त्यो हेलिकोप्टर अनायाश क्वान्देको टाउको नजिकै फुत्त देखा पर्यो | अलि पर खुम्बु जाने बाटोको छोर्तेन नजिकै माथि आकासमा खुम्बिला तिर फर्किएर होभर भै झुकेर अभिबादन गरें जस्तै गर्यो र रनवेको सिरानतिर अवतरण गर्यो | हाम्रो खुसीको कुनै सिमाना थिएन | म झन् यति प्रसन्न भएँ खुम्बिलासंग मानौ त्यो हेलिकोप्टरमा मेरो मानिस, मेरो सपनाको राजकुमारनै आउदै छ | चार जना यात्रु सहित पाईलट पनि हेलीकोप्टरबाट उत्रिए | ति पेसेंजेरहरु सबैले पाइलटलाई अंगालो मारे | हुनसक्छ त्यस्तो खराब मौसममा पनि गन्तब्य सम्म पुयाई दिएकोमा उनीहरु खुसि भएका थिएँ | म चुपचाप उनीहरुको गतिबिधि नियालेर बसिरहेकी थिएँ |

" बिचरा, क्याप्टेन लामा नै रहेछ | " दिकीले भनिन |

"कसरि थाहा पायौ ?" मैले सोधें |

"देखेनौ, अघि खुम्बिलालाई ढोगेको ? तेस्तो काम खाली शेर्पा पाईलटहरु मात्रै गर्छन | " उनले फेरी भनिन |

मैले थामसेर्कुलाई बिर्सी सकेकी थिएँ | पाइलट एउटा अग्लो , कसिलो बदन भएको, हेर्दै निक्कै सुन्दर युबक थियो | मैले आफु बसेको ठाउँ बाट उसको मुहार त देख्न सकिन तर किन किन उ फर्किएर जानु अघि उसलाई नजिकबाट हेर्ने एक किसिम को रहर जाग्यो म भित्र | उ हेलीकोप्टर भित्र पसेर हेडफोन टाउकोमा राख्न थाल्यो | म निरास भएँ किनकि दौडेर पनि म उसलाई भेट्न सक्दिन थिएँ | एक्कासी उसलाई हेर्ने भोक जाग्नुको अर्थ पनि मैले बुझिन तर म भित्र भित्रै कुढीन थाली सकेकी थिएँ | कता कता उसको रुप त्यो टुंगना र डम्फु बजाउदै हिड्ने केटासंग मिले मिले जस्तो लाग्नु नै सायद उ प्रतिको आसक्ति को कारण हो | मैले हेर्दा हेर्दै हेलिकोप्टरको पखेटाहरु जोडले घुम्न सुरु गरें र धुलोको एउटा बबण्डर उडाएर त्यो आकाशमा सिधा माथि उठ्यो | म साँचै कहाली लाग्दो गरि छटपटाएं अनि जोडको बतासले उडाएको आफ्नो केसहरु सम्हाल्दै थिएँ | अचम्म, त्यो हेलिकोप्टर त सिधा मेरो आँखा अगाडी होवर भएर अडी रहेको थियो | त्यसले यति धेरै हावा फाली रहेको थियो कि मलाई आफ्नो केस सम्हाल्न निकै गाह्रो भैरहेको थियो |

"के मात्तिएको मान्छे होला ?" मलाई थोरै रिस पनि उठ्यो तर नढाटि भन्ने हो भने मलाई उसको त्यो बेहोर मन परि रहेको थियो | कमसे कम उसलाई मेरो उपस्थितिको आभास त रहेछ नत्र उ फुत्त उडेर गइ हाल्ने थियो नि | तर उ गएन बरु हेलिकोप्टर लाई फेरी भुइमा राख्यो | म छक्क परें | हेर्दा हेर्दै फेरी आकास पुरै बादलले छोपियो | उड्ने तैयारी गरि रहेको हेलीकोप्टरले सायद बाध्य भएर इन्जीन बन्द गर्यो, बातावरण फेरी चकमन्न भएर आयो | अनि म पनि दिकी संगसंगै होटेल भित्र गएँ |

हामी त्यही लबीमा केहि बिदेसी पर्यटकहरुसंग गफिन थाल्यौं | दिकी फ़्लुएन्ट इंग्लिशमा उनीहरुलाई आजको भ्यालेन्टाइन डे ब्लास्टको बारेमा जानकारी दिई रहेकी थिईन | त्यही बेला चार जना यात्रुलाई अघि लगाउदै क्याप्टेन साहब पनि "टासी डेले" भन्दै होटेलमा प्रवेश गर्नु भयो | दिकी र उ अभिबादन साटा साट गरि रहेको देखेर उनीहरु एक आपसमा परिचित छन् भन्ने अनुमान गर्न मलाई तेती गाह्रो भएन | तर म भनैं आफ्नो मुटुको धुकधुकी एक्कासी बढ्न थालेको महसुस गर्न थाले | किन भनैं उ अरु कोहि नभएर मेरो मन मस्तिस्कमा बसेको मानिस, उही बांफको सडकमा टुंगना र डम्फु भन्ने गीत घन्काउदै हिड्ने अनि मेरो आँखाको प्रसंसा गर्ने मानिस थियो | म चाही एकछिन अघि दिकीले भनैं जस्तै गरेंर खुम्बिलासंग प्रार्थना गरि रहेको अवस्थामा पुगे | मनमनै सोचे, वास्तबमा खुम्बिला साक्षात् देवता नै रहेछन नत्र यो सोच्दै नसोचेको रुपमा मेरो मनमा बसेको मानिस यहाँ अचानक मेरो आँखाको अगाडी ?

"ओ माई गड | हाउ कम यु आर हेअर ? " मलाई देख्ने बित्तिकै उसको मुखबाट निस्की हाल्यो |

"यु गाईज नो इच अदर ?" तिन छक पर्दै दिकीले पनि इंग्लिश मै सोधिन |

"आस्क हर |" भन्दै एक निमेषमै उ मेरो छेउमा उभिन आइ पुगी सकेको थियो | मेरो मुटुको धड्कन केहि बढेको मैले महसुस गरें | सायद दिकीले हामी बीचको केमेस्ट्री लाई बुझिन, त्यसैले भनि हालिन "आजको प्रोग्राम जन्ने भयो ?"
" के प्रोग्राम ?" उसले उत्सुकता देखाई हाल्यो अनि दुइ जना आफ्नो भाषामा गफिन थाले, तर घरि घरि भ्यालेनटाइनको उच्चारणले मैले बुझी हाले उनिहरु आजको कार्यक्रमकै बारेमा कुरा गरिरहेका छन् |
"यु गाइज ह्याभ ओन्ली फिउ मिनेटस" दिकीले जादा जादै भन्न भ्याई हालिन | प्रतिक्रियामा हामी दुवै रहस्य पूर्ण मुस्कुरायौ मात्रै |
" तिमीलाई यहाँ देखेर म त छक्क परि रहेको छु यो सपना त् होइन हगी ?" उसले मेरो आँखामा नियाल्दै भन्यो |

" म पनि तिमीलाई पाइलट को रुपमा देखेर... " भन्नै लागेकी थिएँ उसैले भन्यो " सायद तिमि पनि..?"
मैले स्वीकृतिमा टाउको हल्लाई दिएँ |
"तिम्रो गन्तब्य कहाँसम्म हो कोनी ?" उसले प्रश्न गर्यो |
"कुनै निश्चित गन्तब्य छैन, समयले आज यहा ल्याई पुर्यायो, भोलि कहाँ पुर्याउने हो केहि थाहा छैन" मैले पनि सिधा सिधा जवाफ दिएँ |
" जे होस् तिमीलाई अचानक यहाँ देख्न पाउदा म बेहद खुसि छु | मैले सपनामा पनि सोचेको थिईन तिमिसंग यसरी भेट्न पाउने छु भनेर | "
"मलाई पनि सपना जस्तै लागि रहेको छ, तिमीले मलाई यति सजिलै चिनेको देखेर " मैले सुस्तरी उसलाई नियाल्दै भनें |

"तिमीलाई मेरो मायालेनै तानेर ल्याएको हुनु पर्छ |" उसले पनि मलाई चियाउँदै भन्यो " अनि तिमि लाई नि ? "

"मौसमले"

" ………" मैले कर्के आँखाले हेरे मात्रै | सायद उसले मेरो आँखाको भाखा बुझ्यो र हतार हतार भन्यो "सायद तिमि यहाँ भएकै कारण बादलहरुले बाटो छोडी दियो नत्र झन्डै........... | "उसले एउटा लामो निस्वास छाड्यो र फेरी भन्यो "यो एउटा संयोग मात्रै त पक्कै पनि होइन, तिमीलाई के लाग्छ ? "

साच्ची भन्ने हो भने म आफै पनि त्यस्तै सोची रहेकी थिएँ तर म केहि पनि बोल्न सकिन | उसले मेरो प्रतिक्रिया पर्खिएर समय बर्बाद पनि गरेन | केहि स्थानिय मानिसहरु उसंग कुरा गर्न खोजिरहेका थिए त्यसैले उ मसंग अनुमति मागेर उनीहरुसंग सेर्पा भाषामै कुरा गर्न थाल्यो |

" स्यांग्बोचे जस्तो ठाउमा भ्यालेंटाइन् ब्लास्ट, अनबिलिअभल | " उ एक्कासी चिच्च्यायो, र मेरो नजिक आएर उसले मलाई साऊतिको भाखामा भन्यो " भ्यालेंटाइन् ब्लास्टको तैयारी हुदै छ रे, त्यो पनि पहिलो पल्ट अनि टिपिकल शेर्पा स्टाइलमा | आर यु रेडी ?"
मैले खाली मुस्कुराएर मौन स्वीकृति जनाएँ | अनि उ खुसि हुदै मसंग अनुमति मागेर भित्र गयो |
एकछिन पछि दिकीले मलाई बोलाएर अर्को कोठामा लगिन र भनिन "आज म तिमिलाई शेर्पिनी बनाऊछु ल ?"
मैले खुशी हुदै स्वीकारे | अनि उनले मलाई पक्का शेर्पिनिमा रुपान्तरण गर्न सुरु गरिन |
"क्याप्टेन लामालाई कहिले देखि चिन्दछौ ?" दिकिले मलाई सोधिन |
"दुइबर्षअघि ठिक आजकै दिन देखि, तर उ क्याप्टेन लामा भन्ने चाही मलाई थाहा थिएन " अनि मैले दुइ बर्ष अघि बांफबाट सुरु भएको आफ्नो एक किसिमको प्रेम कहानीको बारेमा दिकी लाई सारांशमा सुनाएं |

" खुम्बिलाले तिम्रो प्रार्थना सुन्नु भयो, अब त विश्वास भयो होला नि तिमीलाई ?" दिकिले मलाई जिस्क्याइन |

केहि बेर पछि म त्यो होटेल भित्रको एउटा विशिष्ट पाहुनाहरुको स्वागत सत्कार गर्ने कोठा भित्र थिएँ | त्यो कोठा पूर्णत परम्परागत शैलीका फर्निचर र सामग्रीहरुले सजाईएको थियो | मैले सोचेको पनि थिईन, त्यहाँ तिस चालिस जना मानिसहरुको उपस्थिति भै सकेको थियो र बक्खु र काउबओय ह्याटमा सजिएर बसेको क्याप्टेन लामालाई मैले चिन्दा पनि चिनिनि | सबै जोडी मिलेर बसेका थिए र जब मलाई उसकै छेउमा पुर्याएर बस्न भनियो अनि मात्रै म झसङ्ग भए | को को

नचिनेको शेर्पा संग बस्नु म अलि असजिलो महसुस गरि राखेकि थिएँ तर अनायास उसले मेरो हात समातेर बस्न सघाई रहेको बेला मैले उसलाई चिने | म लाजले भुतुक्कै भएँ अनि उसको रुप देखेर मलाई हासो रोक्न एकदमै गाह्रो भै रहेको थियो | चाँदीको एउटा निक्कै कलात्मक कपको एक किनारमा थोरै नौनी टासेर त्यस्तै कलात्मक भाडाबाट छ्यांग राख्दै पालै पालो सबैलाई पियाउने काम भै राखेको थियो | मैले पनि जीवनमा पहिलो पल्ट छ्यांग पिएँ

र त्यसको नसामा सुस्तरी लठ्ठीन थालेँ| मैले उसलाई चियाए, उ मलाई पहिले देखिनै एकोहोरो नियाली रहेको रहेछ त्यसैले हाम्रा आँखा हरु गजबले जुधी हाले | मैले थोरै आँखा नचाउदै आँखाको भाखालेनै सोधें "के ? "

" याद छ तिमीलाई त्यो क्षण ?"

"कुन क्षण ? " मैले बुझ्न पचाएर सोधे |

" मेरो आँखा कस्तो छ ? " उसले दुइ वर्ष अघि मैले जसरि उसलाई सोधेको थिएँ बिल्कुल त्यसको नक्कल गर्दै भन्यो | मैले उसलाई पछाडीबाट दुइ मुक्का हानिदिएँ |

"वास्तबमा तिम्रो आँखा जति सुन्दर आँखा मैले अरु देखेको छुइन | " उसले गम्भीर हुदै भन्यो |

"त्यसो भए तिमि, आँखाको तुलना गर्दै हिडी रहेको छौ दुइ वर्ष देखि ? " मैले निक्कै घुरेर हेरे उसलाई |

" हैन | हैन || , देखिन्छनी आँखाहरु त जता सुकै | तर सामने पर्ने हरेक आँखासंग तिम्रो आँखाको तुलना गर्नु चै एउटा आदत जस्तै भै सक्यो.| " उसले एक टक मेरो आँखामा हेरेको हेरेकै भन्यो | मैले फेरी उसलाई उसको ढाडमा एक मुक्का हानी दिएँ |

"त्यो आँखाले लौ न मलाई मार्यो.........| " उसले एउटा पुरानो गीतको बोल गुन्गुनायो |

"अब त अति नै भयो है ..| " म उठेर सेब्रु नाची रहेकाहरु संग मिसिन पुगेर उनिहरु संगै खुट्टाको ताल मिलाउने प्रयाश गर्न थालेँ |

यो मात्तेको शेर्पा ले के छोडथियो मलाई, उ पनि उठेर आइ हाल्यो र मेरो एक साइडको हात फुस्काई दिएर मलाई अंगालेर नाच्न सुरु गर्यो | उ मलाई कानमा गीतको बोलको नेपाली अनुबाद सुनाउदै नाची रहेको थियो | तर मलाई के थाहा, उसको अनुबाद सहि हो कि होइन | जे भए पनि उसले बर्बराई रहेको सबै कुरा हरु छ्यांगको नसामा झन् बढ्ता मात थप्ने कुरा भै रहेको थियो | म झन् बढ्ता मातमा डुब्दै गइ रहेकी थिएँ |

अनायास म नाच्ने हरुको हुल बाट फुत्किएर बाहिर बरन्डामा निस्किए. | बाहिर निकै सित्तल थियो | थामसेर्कु आकासको खुर्पे जुन हेरेर टोलाई रहेको थियो | उ लर्बराउदै मेरो नजिक आइ पुगी हाल्यो | उसले खुम्बिला लाई नमस्कार गरेको देखे पछि उ पक्का मातेको छ भन्ने लाग्यो | तर उसले निकै गम्भीर भएर मलाई एक हातले अंगालेर आफ्नो नजिक तान्यो र बिस्तारै भन्यो " तिमीलाई त्यो पहाडको बारेमा केहि जानकारी छ ? "

झन्डै मैले "त्यो मेरो माइती घर हो" भनेर नभनेकी तर कुरा बनाएर भनैँ "दिकीले मलाई सबै भनि, एक छिन अघि हामी कुइरो भित्र हेलीकप्टर को आवाज सुनेर आत्तियौ र सफल अवतरण को लागि खुम्बिलासंग प्रार्थना गर्यौ " उसले मलाई झन् बढ्ता आफु नजिक तान्यो र भन्यो "तिमीलाई खुम्बिला को बारेमा थाहा छ त्यसो भए ?

मैले खाली उसको आँखामा आफ्नो आँखा मात्र बिसाय | तिमि पक्कै पनि खुम्बिलाकै बरदान स्वरूप यहाँ आइ पुगेको हुनु पर्छ | " उसले फेरी भन्यो

“सायद तिमि मसंग मिलनको प्रार्थना गरिरहेकी थियौ, खुम्बिलासंग, जानी नजानी ?" मैले कुनै प्रतिबाद गरिन, बरु आफ्नो बोझिल हुदै गइ रहेको शिर उसको बलियो कुममाथि अडयाएर चुप चाप उसको कुरा सुनी रहे | उसले मेरो केशहरु खेलाउदै बिस्तारै भन्यो " तिमि मान या नमान, मलाई पुरा विश्वास छ हाम्रो यो मिलन, त्यो पनि भ्यालेन्टाइन डे को दिन ? , खुम्बिलाको बरदान बिना त यो कदापी सम्बभ थिएन | तिमीलाई कस्तो लाग्छ ? "

म केहि बोल्नै सकिन | म त उसको कुरामा यति बिघ्न डुब्न थाली सकेकी थिएँकी खाली उ बोलि रहोस र म सुनी रहू जस्तो मात्रै भै रहेको थियो.| मेरो मौनताको के अर्थ लाग्यो कुन्नि उसले मलाई आफ्नो सामुन्ने सिद्या उभ्यायो र दुवै हातले मेरो पाखुरा हरुलाई बलियो संग समातेर भन्यो

"आजको दिन खुम्बिलाको कसम खाएर भन्छु, म तिमिलाई भित्रि हृदय देखिनै माया गर्छु | किन किन, तिमीलाई पहिलो झलक देखेको दिन देखि मेरो यो अतृप्त आत्माले तिमीलाई खोजिरह्यो | तिम्रो

अनुपस्थितिमा पनि मैले तिम्रो यो सुन्दर आँखालाई एक पल पनि बिर्सन सकिन | "
"अनि ? " मैले उसलाई मन पर्ने मेरा आँखाहरुले मायालाग्दो पाराले नियाल्दै सोधे |
"अनि म अधुरो, एकदम अधुरो मानिस जस्तै भएँ | " उसले पनि त्यस्तै मायालाग्दो पाराले मलाई नियाल्दै भन्यो |
" सम्पर्क भन्दा बाहिर बसेर, मलाई अन्योल र संकाको भुमरीमा छोडेर तिमीले मलाई पनि अथाह् बेदनामा डुबायौ | किन त्यसरी हरायौ ?" मैले उसलाई सोधेँ "माफ गर, किन किन मलाई आफ्नो मायाको परिक्षा लिन मन लाग्यो, त्यसैले " यदि मेरो माया पबित्र अनि साचो नहुदो हो त तिमि मलाई खोदै यहाँ आउने नै थिएनौ | अनि तिम्रो मनमा पनि म प्रति माया नहुदो हो त त्यस्तो प्रतिकुल मौसममा म यहाँ अवतरण गर्न सक्ने नै थिईन | तिमीलाई कस्तो लाग्छ ? " उसले आफ्ना चिम्से आँखा हरुले गहिरोसंग नियाल्दै प्रश्न गर्यो "सायद तिमि ठिकै भनि रहेका छौ ..| " मेरो जवाफ सुनेर उ चार हात उफ्रियो | खुसीले दङ्ग पर्दै |
"तर....| "

मेरो यो एउटा शव्दले उसको खुसि, उमङ्ग, उत्तेजना सबै थोकमा ब्रेक लगाई दियो | उ झसङ्ग भएर आफ्ना संकालु आँखा हरुले मलाई नियाली रह्यो | मेरो एउटा सब्द "तर" ले उसको विश्वासको धरातलमा आठ रेक्टरको भुइचालो गएको देखेर मलाई उसको झन् धेरै माया लाग्यो | म जानी नजानी उसलाई संकाको एउटा जालोमा अल्झाउदै थिएँ | अनायास उसको मुहारमा आएको रंगहरुको परिवर्तन अध्यन गर्न थाले म |

"तर हामीले यस अघि यसरी भेटेर कहिले पनि कुरा गरेंका थिएनौ | तिमि त मसंग यस्तो बेबहार गरि रहेका छौ मानौ हामीले जिन्दगिका धेरै पलसंगै बिताई सकेका छौ | यति धेरै आत्मविश्वासका साथ तिमीले मलाई आफ्नो प्रेमिका झैँ बेबहार गर्नुको कुनै आधार ? " उसलाई धेरै सकस नदिने विचार गरेंर मैले आफ्नो मन हुडास पोखी हाले |

"....................................." उ शव्दहीन भएर टिठ लाग्दो टोलाई मात्र रह्यो | मैले नै फेरी भनेँ " तिमीलाई मेरो बारेमा केहि पनि थाहा छैन, म कस्तो प्रकृतिको केटि छु, कस्तो विचार र आचरणको केटि छु, केहि पनि थाहा नपाई कन यति धेरै माया प्रेमको कुरा तिमि कसरि गर्न सकी रहेका छौ ? मलाई त अचम्म लागि रहेको छ ?"

"..................................." उ फेरी पनि केहि बोलेन, बिल्कुल त्यसरी नै एकनास टोलाई रह्यो | मैले उसको चिम्से आँखाको गहिरो हेराईको धेरै बेर सामना गर्न सकिन अनि थोरै मुस्कुराउदै भनेँ " मात्रै मेरो आँखामा लोभिएको मान्छेलाई म बिन्ति गर्छु तिमीले मेरो बारेमा बुझ्नु पर्छ | "

" केहि जरुरि छैन, मेरो माया नै मेरो बिस्वासको आधार हो, मेरो मुटुले मलाई जे भन्यो त्यसलाई नै मैले सहर्ष स्वीकारे, मलाई तिम्रो बारेमा केहि पनि जान्नु आवश्यक छैन | तर .... " उसले एकदमै निर्धक्क बोल्यो र मैले जस्तै अन्तमा "तर..| " मात्रै भनेर मेरो मुटुलाई नै चिसो बनाइदियो | मैले अलिकति पनि ढिलो नगरी सोधी हाले "के तर ?"

" तर, तिमि लाई मेरो मायामा विश्वास छैन भने बेग्लै कुरा हो | तिमीलाई मेरो बंसावली, मेरो आचरण यता उता केहि बुझ्नु मन लागेको हो भने मेरो भन्नु केहि छैन " उ अलि रिसाय झैँ गर्यो " मैले त्यसो त भनेकी थिईन, मेरो भनाइको आशय यति मात्रै हो कि खाली रुपमा लठिएर गरेको मायाको जग कतिको बलियो हुन्छ ? भोलि कुनै सानो असमझदारी सिर्जना भयो र तिम्रो विश्वासको जग हल्लियो भने के हुन्छ ? म तिमिलाई निसन्देह माया गर्छु, त्यसैले म तिमीलाई कुनै पनि हालतमा दुखि देख्न सक्दिन |"म स्पस्ट भै दिएँ |

जवाफमा उसले मलाई आफ्नो अंगालोमा बाध्यो र मैले आफ्नो निधारमा उसको तातो अधरको स्पर्श महसुस गरें | कुनै प्रतिबाद बिना म उसको फराकिलो छातीमा लिपिक्क टासीएर उसको मुटुको धुकधुकी गन्न थाले | मन मनै सोची रहेकी थिएँ " कतै छ्यनिक मायाको जाल फालेर यो मानिस मेरो अस्मिता संग खेल्न आतुर त छैन ? " म आफै भित्र खंगरङ्ग भए र होसियार पनि | सायद उसले मेरो चिसिएको रगतको तापक्रम थाहा पायो र सुस्तरी आफ्नो अंगालो खुकुलो पारी दियो | "तिमीलाई जाडो हुन थाले जस्तो छ, भित्र जाऊ | " उसले मेरो हात समातेर भित्र लग्यो | म चुप चाप उसको पछि लागे | हाम्रो आगमनलाई एक हुल शेर्पा र शेर्पिनी हरुको हाँसोले स्वागत गर्यो | तर उ त्यहाँ रोकिएन बरु उसले मलाई सिधै

एउटा अर्को झन् बढी परम्परागत सैलीमा सजाइएको बैठक कोठामा पुर्यायो जहाँ बिचमा अगेना जस्तो ठाउमा आगो तापेर एक जोडी बिदेशी दम्पति मात्रै बसी राखेका थिएँ | हामी पनि त्यही आगोको अर्को पटी गएर बस्यौउ | करिब करिब हामीलाई पछ्याउदै

आएकी एक जना महिला लाई उसले शेर्पा भाषामा हातको औला भांची भांची के के भन्यो तर मैले केहि पनि बुझ्न सकिन | अनि उ म संग माफ मागेर बाहिर गयो सायद सौचालय तिर | त्यही बेला ति बिदेसी दम्पतीले म संग केहि बेर कुरा गर्ने मौका पाए | हामी बिबाहित हौ भन्ने भ्रम परेको रहेछ उनीहरुलाई | मेरो कुरा सुनेर उनीहरु सहज हासे मात्रै | उ भित्र आउने बित्तिकै " तिमीलाई भोक कतिको लागेको छ ? " उसले भित्र आउने बित्तिकै आंगेनाको आगो चलाउदै सोध्यो " नढाटी भन्ने हो भने तिमीलाई देखे पछि भोक सोक कता हरायो कता थाहानै भएन |" मैले भएको कुरा सहज भनि दिएँ | उ मुस्कुरायो मात्रै |

" तिमि लाई ?" मैले नै फेरी सोधेँ " मलाई त गजबको भोक लागेको छ, मानौ मैले केहि बर्ष देखि केहि खाएको नै छुइन | बर्सौं देखिको भोको मान्छे म | " उ मुस्कुरायो |"मतलब ..?" म ससंकित भएँ |

"......................................" उसको मौनताले झन् धेरै संकामा पार्यो मलाई | 'होस् गर है केटि, यो क्याप्टेन साहबको नियत ठिक छैन जस्तो छ ' मेरो मनले मलाई सतर्क गरायो | एक मनमा लाग्यो एउटा बहाना बनाएर त्यहाँबाट टाप कसू तर त्यही बेला अघिको तिनै महिलाले कलात्मक तामाको भाडा, बीचमा रनक्क रन्किएको आगो अनि ओरिपरी मगमग टिम्मुरको बासना आइरहेको तातो हपहपी बाफ उडी रहेको कुनै खानाको परिकार ल्याएर हाम्रो अगाडी राखी दिईन | अनि अर्को एक जना भाइले चाही चाइनीज वओलमा भात र मैदाको विशेष किसिमको रोटि |

"मेरो वर्षौं देखिको भोक यही हो, स्याकपा | हामी शेर्पाहरुको विशेष परिकार | " उसले एउटा खाली वओल, लिदै भन्यो | मेरो होस् बल्ल ठेगानमा आयो र मैले पनि अर्को वओल समातेर भनैं "रेसिपीहरु भनन मलाई | "
"हाम्रो यो भेगमा पाइने जति मासुको परिकारहरु अनि पाइने जति साग सब्जी सबै छ यस्मा | " उसले आफ्नो वओलमा स्याकपा राख्दै गर्ब साथ भन्यो |"मतलब ....?" मासुको सबै परिकार भने पछि मा झस्किएं |
" नडराऊ गाईको मासु छैन | " उसले कुरा बुझी सकेछ |
"तर बदेल चै छ है फेरी | चल्छ कि चल्दैन तिमीलाई ?" उसले फेरी भन्यो |
मैले केहि नबोली आफ्नो वओलमा स्याकपा राखे र चोप्स्टिक लिएर खान थालैं |
म बांफ र भ्याँग्कुभर बसेकिले चोप्स्टिकले खान सिपालु भै सकेकी थिएँ | उ मैले चपस्टिकले खाएको हेरी रहेको थियो र भनि हाल्यो " हाम्रो कल्चरमा एडजस्ट हुन तिमीलाई तेती गाह्रो होला जस्तो छैन ?"

मैले चोप्स्टिकले उसको नेप्टे नाखमा बिस्तारै हिर्काई दिएँ र भनैं " तिमि मलाई धेरै नजिस्क्याउ है | "
"कस्तो मात्तेको शेर्पिनी होला" उसले पनि मेरो चुच्चो नाकमा चोप्स्टिकले बिस्तारै हिर्काई दिदै भन्यो.|
वास्तबमा मलाई स्याकपा धेरै मन पर्यो र मैले थपी थपी खाई दिएँ |
" तिमिलाई यार्सागोम्पाको बारेमा थाहा छ ? " उसले अलि उत्ताउलो पाराले सोध्यो | अनि मैले उसलाई एउटा हान्ने राँगो जस्तै देखे |
"थाहा छ किन ?" म पनि के कम, नडराई भनि दिएँ |
"यसको रेसिपिमा त्यो पनि पर्छ " उसले अलि नकचरो पाराले हास्दै भन्यो |
मैले उसलाई अलि रिसाए झैँ गरि हेरी मात्र रहें | उ एकोहोरो हाँसीमात्र रह्यो |

"यही हो तिम्रो भ्यालेन्टाइन डे को उपहार त्यसो भए ? " मैले त्यस्तै रिसाएकै मुद्रामा भनि दिएँ | उ झसङ्ग भयो र बक्खुको खोकिलामा हात घुसारेर केहि चिज निकाल्यो | उसको हातमा अमुल्य जी माला देखेर म तिन छक परें | दिकिले मलाई त्यो मालाको महत्व र मुल्यको बारेमा भनेकी थिइन् | " मैले यो पोहोर सालदेखि गोजीमा बोकी राखेको छु, जुन दिन जहाँ, जस्तोसुकैं अवस्थामा तिमिसंग भेट भए पनि यो तिमीलाई दिनेछु भनेर मनमनै कसम खाएको थिएँ, मलाई विश्वास छ तिमि मेरो यो उपहार लाई सहर्ष स्वीकार्ने छौ | " उसले मलाई निक्कै भावुक अनि गम्भीर भएर त्यो

माला मेरो हातमा राखी दियो | म असमन्जसमा परें | सम्हालिदै भनैँ "यति महँगो उपहारको कुनै जरुरि छ र ? तिम्रो उपस्थिति नै आजको दिनमा मेरो लागि एउटा बहुमुल्य उपहार भएको छ |"

" म मान्छु, म पनि बिल्कुल यस्तै सोची रहेको छु तर यो मेरो मायाको नासो हो, तिमि कसैको भै सकेकी भएपनि यो म तिम्रो हातमा सुम्पेर मात्र मर्ने छु भन्ने कसम खाएको छु, बाकी तिम्रो मर्जी " उ त साच्चै एकदमै भित्र अन्तर हृदयदेखि बोलि रहेको थियो | उसको बोलीमा कुनै किसिमको मिसावट छ जस्तो पटक्कै लागेन | तै पनि किन किन मलाई भित्र कता कता डरपनि लागि रहेको थियो | मेरो मनको कुरा बुझेर होला उसले आफ्नो हातले नै मेरो मुठी बन्द गरि दियो र भन्यो

"जे सुकै सोच, मेरो माया तिम्रो मुठीमा कैद छ | यो भोटेको माया तिमीलाई स्वीकार्य छैन भनेपनि मेरो कुनै गुनासो छैन | प्रेम अन्धो हुन्छ भन्छन मानिसहरु साच्चैनै एक नजरमा माया बस्यो, म के गरूँ ?"

अनायास म भित्रको मेलिना भक्कानिएर आयो, सत प्रतिसत सहि बोलि रहेको थियो उ, मैले अलिकति पनि समय खेर नफाली भनैँ "एक नजरमा माया बस्यो, आँखाले सधै तिमीलाई नै खोजि रह्यो, मैले सधै आफ्नो मनको धुकधुकी लाई सुने | त्यहाँ तिमीले मेरो आँखाको प्रसंसामा बोलेको सब्दहरु मात्रै गुन्जी रहेको पाएँ, यो माया नभएर अरु के हुन् सक्छ ? तर.....| "

"तर के ......?" उ अतिनै झस्कियो |

"किन तेस्तरी झस्किएको ..? मैले उसको आँखामा नियाल्दै सोधे |

" तिम्रो तर...ले त म बसेको धरातलमा नौ रेक्टरको भुइचालोनै गयो" अनि उ संगसंगै म पनि दिल खोलेर हाँसे |

आंग दिकी कति बेला हाम्रो सामु उभिन आइ पुगिन थाहानै पाईन | मैले उनको हेराइको सामना गर्न सकिन र आँखा अन्तै डुलाउने प्रयाश गरें | उसले भने शेर्पा भाषामा के के बोलि रह्यो, मैले खाली बुहारी भनेको मात्रै बुझें, अनि उसलाई रिसाए झैँ हेरे |

"पर्फेक्ट चोइस, लेट्स गो टु सेलेब्रेट, फेम्मर काट्ने बेला भयो |" दिकीले खुसि हुदै भनिन र अलि हतार नै गरिन |

"के हो फेम्मर भनेको ?" मैले प्रस्न गरें दुबैलाई | तर उसले मेरो हात समातेर आफु संगसंगै मलाई पनि उठायो र भन्यो "शेर्पा केक ... वाओ.. आइ दिकी यु र ग्रेट |" उ बच्चाले क्यान्डी पाउदा खुसि भए जस्तै रमाउदै भन्यो | अनि हामी दिकीको पछि लागेरा अघि सेब्रु नाचेको हलमा पुग्यौ | त्यहाँ प्रणय दिवसलाई सुहाउने नेपाली गीत बजी रहेको थियो | धुनधन रमाइलोसंग, हासो अनि ठट्टाको होहल्ला बीच दिकी अलि ठुलो स्वरले कराईन " आजको साँझ, प्रणय दिवस, प्रेमी प्रेमिका हरुको साँझ, मुटु साट्नेहरुको साँझ, त्यसैले भर्खरै मैले आफ्नै आँखाले देखेको एउटा फ्रेश नया प्रेमीहरुको हातबाट यो फेम्मर काटिने छ ...." दिकी बोल्दा बोल्दै रोकिईन् र हामीलाई नियालिन | मेरो मुटुको धुकधुकी अनायास एकदमै बढेर आयो | मैले आफ्नो आँखाको इसाराले उनलाई रोक्न खोजेँ तर व्यर्थ्थ, उदघोष गरि हालिन " क्याप्टेन लामा यन्ड फेम राईटर मेलिना ...|||"

उ येस्तरी खुसि भयो मैले उसको खुसीमा साथ नदिने त प्रश्नै थिएन | एउटा निक्कै कलात्मक दाप भएको तरवार थमाई दिईन दिकीले उसको हातमा अनि उसले सानसंग तरवार निकालेर तेस्को चमकमा मेरो अनुहार नियाल्यो | सायद यति धेरै खुसि म कहिले पनि भएकी थिईन | दिकी आफ्नी डिजिटल क्यामेराले अविरल तस्बिर लिई रहेकी थिईन | बिदेशी पाहुनाहरुको त काम नै फोटो र भिडियो खिच्नु मात्रै थियो | उसले मेरो हात तानेर तरवारको बिडमा राख्यो अनि मेरो हात माथि उसको हात, न्यानो तातो हात, अनि हामी दुबैले मिलेर शेर्पा केक काट्न तम्सेको देखेर त्यहाँ जम्मा भएका सबै जना हाम्रो प्रेमको सफलताकोलागि आसिरबचनहरु बोल्न थाले, चिच्याई चिच्याई | अनि हामीले त्यही उमङ्ग र होहल्लाको बीच फेम्मर काट्यौं |

अचम्म, उ त मलाई चुम्बन गर्न तम्सियो | मैले उसलाई सुस्तरी भनैँ " यो हाम्रो कल्चरमा छैन...| " उसले जिद्धी गरेन| अनि एउटा नेपाली गीत घंकिन थाल्यो

'दर्सन नमस्ते ..' राजेश पायल राइको निक्कै चर्चित गीत रहेछ यो, हामीसंगै सबै नाच्न थाले | कति ओटा गीत बज्यो केहि थाहा भएन | निक्कै थाके पछि म नजिकैको लामो बेन्चमा बस्न पुगे | उ पनि बस्न आइ पुगी हाल्यो |

" कस्तो रमाइलो भयो हगी ?" मैले उसलाई नहेरिकनै भनैँ |

" तिमीलाई थाहा छ भर्खरै के भयो ? " उसले पनि मलाई नहेरिकनै भन्यो | मैले आश्चर्य मान्दै उसको अनुहार चिहाएँ |

"मेरो माया सदर भो, हाम्रो प्रेममा लाहा छाप लाग्यो अब ...| " उसले मेरो गाला चिमोटी दिदै भन्यो |

" त्यो त हो ..| " मैले स्वीकारे | तर उ त अलि उदास भए जस्तै गर्यो |

"के भयो फेरी ?" मैले सोधे |

"मेरो दुखको दिन सुरु भयो अब ..| " उ झन् नियास्निएर गयो | मैले उसको कुरा बुझिन, अभिनय हो या साच्चै केहि भेउ पाइनँ |

" तिमि के भन्दै छौ मैले त केहि बुझिन ?" मैले आत्तिदै सोधे |

" यदि तिमीले साच्चै मेरो माया स्वीकारेको हो भने हाम्रो कल्चर अनुसार मैले तिमीलाई आफुसंग राख्न पाउछु |

"अनि त्यही भएर तिमीलाई दुखपनि लाग्यो ?" मैले कटाक्ष नियाले |

"हाम्रो कल्चर अनुसार मैले तिम्रो आमा बाबुलाई हर तरहले खुशी पार्नुपर्छ, हाम्रो दुइ तिन ओटा बच्चा भएपनि उहाहरु खुसि हुनु भएन भने तिमीलाई फर्काएर लान सक्नु हुन्छ | "

" मिस्टर क्याप्टेन, आइ नो व्हाट यु टकिंग अबौट.....?" मैले उसको नियेत चाल पाएर सतर्क भै हालें |

"मि टकिंग, माई कल्चर .." उसले मातेको अभिनय गर्दै भन्यो |

"नो वे ..| तिमि मातेको अभिनय गरेर मेरो मन चोर्ने दाउ गर्दै छौ | तर मेरो कल्चर अनुसार तिमीले... मेरो... आमा बाबुसंग मलाई माग्नु पर्छ | धुनधानसंग बिबाह गरेर भित्र्याउनु पर्छ | अनि मात्रै म तिमीलाई आफ्नो सर्वस्व सुम्पिन सक्छु | "

"दयाट्स योर कल्चर..?" उसले अझै अभिनय गर्न छोडेन |

"एस सर.." भनेर म उठेर भाग्न खोजेँ तर उ म भन्दा छिटो थियो मेरो हात समाती हाल्यो |

"त्यसो भए तिमि भोलि मसंग फर्किनु पर्छ | म एरपोर्टबाट सिधै तिम्रो घर जान्छु " |

"हुन्छ, अब सुत्न जाउँ, सबै जना गइ सके" अनि मात्रै उ झस्कियो |

"माफ गर यो पापी मनलाई, म तिमिसंग जिस्की मात्रै रहेको थिएँ समय गएको त थाहा नै भएन | "

"आइ नो | " मैले थोरै मुस्कुराएर भनैं |

"भोलि पक्का फर्किने हो त ? " उसले सोध्यो |

" म अझै एक दुइ हप्ता यतै बस्छु , एउटा किताब सिध्याउने विचार छ" मैले भनैं |

"एकदम राम्रो, म भोलिको मौसम एकदम खराब होस् भन्ने प्रार्थना गर्दै सुत्न हिडें |"

" राम्रो कुरा मात्रै सोच, नराम्रो सोच्यो भने नराम्रै हुन्छ | " मैले उसको बाक्लो कालो केश पहिलो पल्ट सुमसुम्याई दिदै भनैं | अनि हामी दुवै संगै आआफ्नो कोठा तिर लाग्यौ |

त्यो रात दिकी संग लामो कुराकानी भयो | मैले उसलाई क्याप्टेन लामा र आफ्नो सम्बन्धको बारेमा सबै खुलस्त भनि दिएँ | बिहानी हुने बेला तिर मात्रै म कोठामा पुगेर बिछ्यौनामा ढलें | "

एकै छिन् पछि कसैले मेरो कोठाको ढोकामा नक गरेको सुने | दिकी होलिन भन्ने ठानेर ढोका खोलिदिइ हाले तर त्याँहा त महासय, क्याप्टेन लामा हुनु हुन्थियो | मेरो त होस् हवासनै उड्यो | अनि मैले उस्लाई भित्र आउनबाट रोक्न पनि नपाउदै उसले भित्र आएर मलाई आफ्नो बलियो अंगालोमा बाँध्यो र अविरल चुम्बन गर्न थाल्यो | जीवनमा पहिलो पल्ट एउटा लोग्ने मानिसको तातो तातो चुम्बनको मिठास एक ठाउमा थियो तर मैले मुस्किलले आफुलाई उसको अंगालो बाट मुक्त गरेर रिसाउदै भने "मलाई तिम्रो यो हर्कत मन परेन, तिमि आफ्नो जी माला फिर्ता लिएर मेरो कोठाबाट गइ हाल |"

अनि उ "सरि." मात्रै भनेर फर्कियो | मैले आफ्नो सिरानीको मुनि राखेको जी माला झिकेर जादा जादै उसको जीउमै लाग्ने गरेर फ्याकी दिएँ | उसले फर्किएर त्यो माला भुइँ बाट टिप्यो र चुप चाप अधेरोमा हरायो | मैले हतार हतार ढोका बन्द गरेर त्यहीं अडेस लागि आफ्नो रिसलाई शान्त पार्ने प्रयास गरें | मेरो मुटुको ढुकढुकीहरु शान्त हुने नामनै नलिइ रहेको बेला केहि बेर मै मैले हेलिकोप्टरको इन्जिन चलेको आवाज सुनैं, झ्याल खोलेर हेरैं मिर्मिरे उज्यालो मात्रै भएको थियो | म आत्तिएर हतार हतार एउटा ज्याकेट लगाउदै थिएँ उसले हेलिकोप्टर उडाइ हाल्यो | मौसम पनि राम्रो थिएन |

कालो बादलले आकास सबै ढाकेको थियो | मलाई लाग्यो उ मसंग रिसाएर हिड्यो | मेरो मन एकदमै डरायो र म खुम्बिलासंग प्रार्थना गर्न थालैँ तर नजिकै क्वान्देको छेउमै हेलिकोप्टर ठोक्किएको आवाज संगै म चिच्याएर बिउँझीएं | दौडेर मैले झ्याल खोलेर हेरे | चकमन्न अध्यारोमा कतै कुनै अप्रिय दृश्य देखिएन | आफुले भर्खरै एउटा नराम्रो सपना देखेको सत्यलाई मेरो मनले स्विकार्यो |

यस्तो नराम्रो सपना देखे पछि त्यो रात मैले खुम्बिलासंग प्रार्थना गरेर नै बिताएँ | बिगतका दुइ ओटा भ्यालेन्टाइन डेहरुमा पुरा पुरा समय कल्पनामा डुबेर लेख्ने गरेकोले हुनसक्छ मलाई यस्तो भएको | उ सुतेको कोठा थाहा भएको भए शायद म उसलाई हेर्न मात्रै भए पनि जाने थिएँ हुँला तर मैले आफुलाई सम्हाल्ने कोशिस गर्दै बिहानीको प्रतिक्षामा रातिका सम्पूर्ण घटनाहरुको टिप्पणी लेख्न बसैँ |